# महामञ्जुश्रीगुरु

सम्बन्धित

## मञ्जुगर्त (गर्तेश्वर) र धर्मश्रीमित्रको ऐतिहासिक कथा



नेपालीमा अनुवादक
श्री फणीन्द्ररत्न वज्राचार्य

नेपालभाषामा लेखक
पं. श्री बद्रीरत्न वज्राचार्य

*प्रकाशक*
सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था

*प्रकाशनमा सम्पूर्ण व्यवस्था*
अशोकहर्ष वज्राचार्य



साभार- "स्वयम्भू महापुराण" वि.सं. २०६२

*प्रकाशन*
१००१ थान

*प्रकाशन मिति*
२०७२ साल जेष्ठ २३ गते, शनिवार
आषाढ कृष्णपक्ष चतुर्थी
(ने.सं. ११३५ तछलागा:, चौथी)

दिवंगत जमुनादेवी वज्राचार्यको स्मरणमा
वहाँको वार्षिक पुण्यतिथिमा सहस्र उपहार

*मुद्रण:*
बिनायक प्रेस,
धोबिधारा, कमलपोखरी, काठमाडौं ।

# भावपूर्ण श्रद्धाञ्जली



**स्व. जमुना देवी बज्राचार्य**

**जन्म :**
**१९९९ साल आश्विन २६ गते, सोमवार**
आश्विन कृष्णपक्ष तृतिया
(ने.सं. १०६२)

**मृत्यु :**
**२०७१ साल आषाढ २ गते, सोमवार**
आषाढ कृष्णपक्ष चतुर्थी
(ने.सं. ११३४ तछलागाः चौथी)

# महामञ्जुश्रीगुरु
## सम्बन्धित

# मञ्जुगर्त (गर्तेश्वर) र धर्मश्रीमित्रको ऐतिहासिक कथा

नेपालभाषामा लेखक
पं. श्री बद्रीरत्न वज्राचार्य

नेपालीमा अनुवादक
श्री फणीन्द्ररत्न वज्राचार्य

प्रकाशक
सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था

# लेखकको भनाई



सर्वप्रथम मेरी स्नेही भाञ्जी **जमुनादेवी वज्राचार्य** दिवंगत भएकोमा उनी सुखावति भुवनमा बास होस् भनी वज्रसत्व भगवानमा प्रार्थना गर्दछु ।

सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था मार्फत मेरो भाञ्जी नाति अशोकहर्षले दिवंगत माताको वार्षिक पुण्यतिथिका दिनमा "स्वयम्भू महापुराण" पुस्तक भित्रका दुई अध्याय महामञ्जुश्रीगुरुसँग सम्बन्धित ऐतिहासिक कथालाई पुस्तकको रूपमा प्रकाशन गरी धर्मदान गर्ने इच्छा व्यक्त गर्न आएकोले मेरोतर्फबाट सहर्ष स्वीकृति दिएको छु ।

भविष्यमा पनि उक्त संस्थाले धर्म, संस्कृति सम्बन्धी पुस्तकहरू प्रकाशन गर्दै जाउन् भनी शुभकामना व्यक्त गर्दछु ।

मेरो तर्फबाट नेपालभाषामा प्रस्तुत गरिएको "स्वयम्भू महापुराण" पुस्तकलाई वि.सं. २०६२ सालमा नेपालीमा अनुवाद गर्नुहुने झ्वाबहालका श्री फणीन्द्ररत्न वज्राचार्यको पनि धेरै नै मेहेनत परेको कुरा यहाँ अवगत गर्न चाहन्छु ।

अन्तमा दिवंगत परिवारको सुख, शान्ति, संबृद्धि होस् भनी शुभकामना दिन चाहन्छु ।

॥ भवतु सब्ब मंगलम् ॥

लेखकः

-बद्रीरत्न वज्राचार्य

२०७२ । ०१ । ०८

नमो रत्न त्रयाय
सर्वप्रकारं जगतो हिताय

दर्ता नं. जि.प्र.का.का.७९/०५४/०५४




**वज्राचार्य संरक्षण गुठी**
(Vajracharya Conservation Society)
बैरोचन तीर्थ, बिजेश्वरी, काठमाडौं ।

प.सं.


## हार्दिक मैत्रीमय शुभकामना !

सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्थाका कोषाध्यक्ष श्री अशोकहर्ष वज्राचार्यज्यूले आफ्नी ममतामयी माता श्रीमती जमुनादेवी वज्राचार्य दिवंगत हुनुभएको वार्षिक पुण्यतिथिका दिनमा श्रद्धेय पं. श्री बद्रीरत्न वज्राचार्यद्वारा नेपालभाषामा लेखी प्रकाशन गर्नुभएको "स्वयम्भू महापुराण" को श्री फणीन्द्ररत्न वज्राचार्यले नेपालीमा अनुवाद गर्नुभएको सोही पुस्तक अन्तर्गतको मञ्जुगर्त (गर्तेश्वर) र धर्मश्रीमित्रको ऐतिहासिक महात्म्यलाई "महामञ्जुश्रीगुरु" नाम राखी पुस्तक प्रकाशित गरी जनसमक्ष प्रस्तुत गर्नुभएकोमा अत्यन्त खुशी व्यक्त गर्दै प्रकाशन संस्था एवं पुस्तक प्रकाशनमा सम्पूर्ण दायित्व बहन गर्नुहुने सुरतश्री महाविहार, तक्षबहालका श्री अशोकहर्ष वज्राचार्य समेतलाई यस्तै शुभकार्यमा सँधै तत्पर भैरहन सदा सफल रहुन् भन्ने हार्दिक मैत्रीमय शुभकामना व्यक्त गर्दछौं ।

भवतु सब्ब मंगलम् !

(सागरमान वज्राचार्य)
महासचिव
वज्राचार्य संरक्षण गुठी

मिति: २०७२।०२।१० (कुमार षष्ठी)

प्यान नं. ३०२०००९१५ | जि.प्र.का. दर्ता नं. ०२/०४९/०५०



# सुरतश्री महाविहार संरक्षण तथा सुधार समिति

## तक्ष: बाहा:

असन, तक्ष:बाहाल, काठमाडौं, नेपाल ।



॥ ओं नमो कुलदेवताय ॥

## दिवंगत जमुनादेवी वज्राचार्यप्रति श्रद्धाञ्जली

यस तक्षबहालका सर्वसंघ सदस्यद्वय बृद्धिहर्षकी जहान र अशोकहर्षका माता **जमुनादेवी बज्राचार्य**को निधन भएको बार्षिक दिनमा गुरु पं. बद्रीरत्न बज्राचार्यज्यूबाट रचित ऐतिहासिक दुई कथाको सानो पुस्तकको रूपमा प्रकाशन गरी धर्मदान गरिने कुरा थाहा पाउँदा हर्ष लाग्यो ।

दिवंगत जमुनादेवी बज्राचार्यप्रति श्रद्धाञ्जली अर्पण गर्दै वहाँको निर्वाण हेतु लाभ होस् भनी कुलदेवतासँग म तथा यस समिति प्रार्थना गर्दछौं ।

(मेरुहर्ष बज्राचार्य)
अध्यक्ष
तथा
समिति परिवार

मितिः २०७२-जेठ १४ गते

# प्रकाशकीय

श्रद्धेय पं. श्री बद्रीरत्न बज्राचार्यज्यूबाट नेपालभाषामा लेखिएको र श्री फणीन्द्ररत्न वज्राचार्यज्यूबाट नेपाली भाषामा अनुवादित **"स्वयम्भू महापुराण"** वि.सं. २०६२ सालमा आशानन्द स्वधर्म विहार, थँहितिबाट प्रकाशित उक्त पुस्तकमा विभिन्न अध्याय भएकोमा त्यसभित्रबाट दुई अध्याय प्रकाशन गर्न इच्छा भएको हुनाले उक्त पुस्तकका लेखक पं. श्री बद्रीरत्न गुरुजुसँग **स्व. जमुनादेवी वज्राचार्य**को वार्षिक पुण्यतिथिमा सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था मार्फत प्रकाशित गर्न मौखिक अनुमति लिई यो पुस्तक प्रकाशन गरेका छौं । अनुमति दिएकोमा उहाँ श्रद्धेय गुरु प्रति यस संस्था हार्दिक कृतज्ञता जाहेर गर्दछ ।

हामी मानव जीवनमा जन्मेदेखि मृत्यु हुन अगाडीसम्म पनि हामीलाई शिक्षा, दिक्षा, श्रमको ज्ञान जति हासिल गरिएता पनि पूर्ण विराम हुदैन । त्यसैले गुरुहरूबाट हामीले ज्ञान, शीप लिइरहनुपर्ने हुन्छ । त्यसकारण गुरु हाम्रो जीवनमा बन्दनीय, आदरणीय, पुज्यनीय छ ।

आफूले गरेको गल्ती वा जानी नजानी भूल भएमा आमा बुवाले गाली सजाय दिए झैं गुरुबाट पनि हाम्रो जीवनमा सुधार, सुमंगलमय होस् भनी मनसायले गुरुको बचनलाई शिरोपर राखी ज्ञान लिनु पर्दछ ।

गुरुलाई हामीले कहिलेपनि नराम्रो दृष्टि वा हेला गर्नु हुँदैन भन्ने ज्ञान र गुरुबाट जहिले पनि शिष्यहरूलाई शिक्षा, दिक्षा दिई आशिष दिएको बोध भएकोले यस संस्थाका अशोकहर्षबाट चयन गरेर यो कथा पुस्तक निकाल्ने उहाँ धन्यवादका पात्र हुनुहुन्छ ।

यस संस्थाका उपाध्यक्ष बृद्धिहर्षका हृदयी श्रीमती तथा कोषाध्यक्ष अशोकहर्षका ममतामयी माता र यस संस्थाका पदाधिकारीहरू तथा सम्पूर्ण सदस्य परिवारहरूका स्नेही काकी र संस्थाका साधारण सदस्य समेत रहनुभएका **जमुनादेवी वज्राचार्य** गत २०७१ साल आषाढ २ गते, सोमवारका दिन असामयिक निधन भई हामी सबैलाई मायाबाट छोडी दिवंगत हुनुभएको आज उहाँको वार्षिक पुण्यतिथिका दिनमा यो पुस्तक यस संस्थाबाट प्रकाशित गरी प्रकाशनको सम्पूर्ण खर्च तथा व्यवस्था अशोकहर्ष वज्राचार्यबाट गरेकोले यस संस्था उहाँ प्रति धन्यवाद दिन चाहन्छ र दिवंगत हुनुभएका **जमुनादेवी वज्राचार्य** प्रति हार्दिक श्रद्धाञ्जली अर्पण गर्दै शान्ति तथा सुखावती भुवनमा बास होस् भनी प्रार्थना गर्दै यो सानो पुस्तक यहाँहरूमा सप्रेम टक्र्याउँदछु ।

यसरी नै यो संस्था तथा परिवारलाई दोश्रो वज्रपात गत २०७१ साल माघ १५ गते, बिहीवारका दिन यस संस्थाका अध्यक्ष ऋद्धिहर्ष वज्राचार्यको पनि असामयिक निधन हुनुभएकोमा यस संस्था तथा सम्पूर्ण पदाधिकारी सदस्य परिवारहरूबाट वहाँमा हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं ।

अतः यस पुस्तकमा सिद्धि विहारको परिचय र दिवंगत जमुनादेवी वज्राचार्यको माइती खलक र श्रीमान् खलकका नातागोताहरूको नाम सकभर सवैको राख्ने प्रयास गरिएको छ, यदि यसमा छुट वा अशुद्ध हुन गएमा क्षमा याचना गरी शुद्ध गरेर पढिदिनुहुन विनम्र अनुरोध गर्दछ।

संस्थाबाट पुस्तक प्रकाशन गर्ने प्रयासमा यो पुस्तक तेस्रो प्रकाशन हो। धर्म-संस्कृति संरक्षणमा केही हदसम्म भएपनि यो संस्थाबाट पुस्तक प्रकाशन गरी टेवा हुन जाने महसूस गरिएको छ।

यस पुस्तकमा आफ्नो मन्तब्य दिनुभई हौसला बढाइदिनुहुने लेखक गुरु पं. वद्रीरत्न गुरुजु, बज्राचार्य संरक्षण गुठीका महासचिव श्री सागरमान वज्राचार्यज्यू एवं सुरतश्री महाविहार संरक्षण तथा सुधार समितिका अध्यक्ष श्री मेरुहर्ष वज्राचार्यज्यूमा हार्दिक कृतज्ञता तथा आभार प्रकट गर्दछौं र यो पुस्तकमा शुद्धाशुद्धि गरिदिनुहुने श्री अष्टमुनि गुभाजुलाई धन्यवाद दिन चाहन्छु साथै पुस्तक तयार गर्ने कार्यमा लाग्नुहुने बिनायक प्रेसका कर्मचारीहरूमा पनि धन्यवाद छ।

अन्तमा यही २०७२ साल बैशाख १२ गतेका दिन महाभूकम्प र पछिसम्मपनि आइरहेको भूकम्पले देशमा धेरै नै धनजन नोक्सान भई साथमा देशका केही धरोहर सम्पदा समेत नष्ट भएकोले यस संस्था त्यस प्राकृतिक दुःखद् घडीमा दिवंगत हुनुभएका सम्पूर्ण ज्ञात अज्ञात महानुभावहरूमा हार्दिक श्रद्धाञ्जली अर्पण गर्दै दिवंगतहरू सुखावति भुवनमा बास होस् भनेर प्रार्थनाका साथ दिवंगत परिवारप्रति हार्दिक समवेदना प्रकट गर्दछौं र घाइते हुने सबै महानुभावहरूको छिटो स्वास्थ्य लाभ होस् भनी भगवानमा मंगलमय प्रार्थना गर्दछौं।

**सबैको मंगल तथा कल्याण होस्।**

२०७२।०२।१८ **सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था,** परिवार

सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्थाद्वारा प्रकाशित पुस्तक





नमो बुद्धाय ॥ नमो धर्माय ॥ नमो संघाय ॥

# दिवंगत श्रीमती र दाजुमा श्रद्धाञ्जली तथा सहयोगीहरूमा धन्यवाद ज्ञापन !

**"स्वयम्भू महापुराण"** पुस्तकभित्र ऐतिहासिक कथाहरू मध्ये दुईवटा कथाको पुस्तक प्रकाशन गर्ने इच्छा व्यक्त गर्ने छोरा अशोकहर्षबाट मान्यवर पं. गुरु श्री बद्रीरत्न वज्राचार्यज्यूसँग अनुमति लिनगएको र अनुमति दिनुभएकोमा सर्वप्रथम हाम्रा पारिवारिक गुरुजु समेत हुनुभएका उहाँमा सप्रेम प्रणाम सहित सादर धन्यवाद व्यक्त गर्न चाहन्छु।

हुन त मानिस वा प्राणिको जन्म भएपछि मृत्यु हुनु शास्वत सत्य नै हो। यो हामी सवैले थाहा भएकै कुरा हो र ध्रुवसत्य हो। यसरी समय-दिन आएपछि कोही चाँडै कोही पछिमात्र हो तर जानु नै छ। त्यसलाई कसैले रोक्न सक्दैन। यो प्राकृतिक नियम हो।

यहाँ म आफ्नो केही कुरा राख्न चाहन्छु। म बिरामी (पारालाइज) भएको २०६८ सालको तिहारको समयदेखि हो। शुरुका ४/५ महिना धेरै नै गाऱ्हो भयो र परिवार तथा नातागोतालाई पनि धेरै नै दुःखको साथै सेवामा रहिरहनुपऱ्यो। त्यसमाथि मेरी श्रीमती जमुना त झन् २४ घण्टै मेरो साथमा हुन्थ्यो। अस्पतालका डाक्टर साहेबहरूको औषधि, फिजिओथेरापी, गुरु बद्रीरत्न गुरुजुको फूफा र पूजा, आकुपञ्चर, मालिस, विभिन्न उपाय गरेर खुट्टा अलि अलि चल्न थाल्यो र हाल यसलाई सन्तोष मानी एकजनाको साथ लिएर एक कोठाबाट अर्को कोठामा जान सक्ने भएको छु। देब्रे हात अहिले पनि चल्दैन तापनि मेरो धैर्य अझै निरन्तर छ।

यसरी मलाई मात्र सेवा गर्दा गर्दै मेरी श्रीमती आफ्नो शरीर बिग्रेको होस नभई ठूलो रोग क्यान्सरको सामना गर्नुपऱ्यो। त्यो रोगको उपचारमा डाक्टर साहेबहरू, नर्सिंग होमका सम्पूर्ण सहयोगी दाजुभाई, दिदी-बहिनी र हेरविचारमा संलग्न मेरा छोरा अशोकहर्ष, ३ छोरीहरू (बेबी, रुवी, ऋतु) २ ज्वाईहरू (श्री नरेन्द्रविलास वज्राचार्य र श्री विजयश्री वज्राचार्य), बुहारी सुचिता, नाति-नातिनीहरू तथा आफन्त परिवारहरू, साथीभाईबाट गर्नुपर्ने सेवामा कुनै कमी नराखी गरेको सद्भाव मेलै महसूस गरी सबै प्रति हार्दिक धन्यवाद दिन चाहन्छु। म चाँहि कोठाको पलंगमा नै बसी मेरी श्रीमतीको उपचारमा सहयोग गर्न नसकेकोमा अफसोच गरिरहें। तर पनि मेरी आत्मिय प्रेम उनीसँग सँधै रहनेछ। यी भाव नै हाम्रा दुईका लागि उर्जा भएको महसूस गरेको छु।

२२/२३ महिनासम्म त्यो क्यान्सर रोगसँग डाक्टरी उपचार अप्रेसन, किमो प्रथा महिनामा नै ३ पटकसम्म गर्नुपर्थ्यो, औषधि पनि धेरै नै खाइरहनुपर्थ्यो र उपचार गरिरह्यौं पनि। यसरी त्यो रोगसँग प्रतिस्पर्धा गर्दा गर्दै आखिर हार खाई यो संसार र हामीबाट छोडेर गइन्।

मेरो जिन्दगीको अति सहयोगी तथा प्रेरणादायी श्रीमती **जमुनादेवी वज्राचार्य** सुखावति भुवनमा बास होस् भनी भगवानमा कामना तथा प्रार्थना गर्दछु।

यसरी नै मेरो माहिला दाजु ऋद्धिहर्ष वज्राचार्य २०७१ माघ १५ गते असामयिक निधन भयो र त्यो दिन दाजुमा श्रद्धाञ्जली दिन समेत म असमर्थ भएँ। त्यसमा मलाई दुःख लाग्छ र दिवंगत दाजुको आत्माप्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दै सुखावति भुवनमा बास होस्।

मेरी श्रीमतीको अन्तिम संस्कारका दिनमा पाल्नुहुने सम्पूर्ण महानुभावहरू र त्यस दिनदेखि आजसम्म पनि म र मेरो परिवार प्रति अटुट सद्भाव देखाउनुहुने सम्पूर्ण नातागोता, साथीभाई, टोल छिमेकी र विशेष सहयोग गर्नुहुने हाम्रै तक्षबाहाका ग्वाहालि गुठीका सम्पूर्ण सदस्यहरू र बान्ह महिनासम्म परम्परागत धर्म-कर्म तथा पूजामा विशेष सहयोग गर्नुहुने हाम्रो परिवारको मूल पुरोहित गुरु पं. बद्रीरत्न गुरुजुका सहयोगी पुण्य गुरुजुको साथै अन्य गुरुजुहरू र मेरी श्रीमतीको बाल सखी नानीबाबा र मेरा आफन्त नातागोताहरू तथा अन्य सहयोगीहरूप्रति म ऋणी भई मेरो हृदयदेखि धन्यवाद दिन चाहन्छु। साथै मेरो परिवारमा हरहमेसा साथ दिनुहुने जीवन खड्का प्रति मेरो साधुवाद छ।

यो दुःखद् घडीमा मेरो परिवारप्रति समवेदना प्रकट गर्नुहुने र सहयोग गर्नुहुने सबैमा म र मेरो परिवारका तर्फबाट पुनः धन्यवादका साथै आभारी प्रकट गर्न चाहन्छु।

अन्तमा जानी नजानी कुनै भूल भएमा क्षमा माग्दै वज्रसत्व भगवान्ले हामी सबैलाई निरोगी तथा सुख, शान्ति, समृद्धि गरिदिउन् भनी कामना गर्दछु।

धन्यवाद !

**-बृद्धिहर्ष वज्राचार्य**

२०७२ जेठ २० गते

**स्व. जमुनादेवी वज्राचार्यको बार्षिक पुण्यतिथि**
२०७२ साल जेष्ठ २३ गते, शनिवार,
आषाढ कृष्णपक्ष चतुर्थी
(ने.सं. ११३६ तछलागाः, चौथी)

# गर्तेश्वर (गोपालेश्वर)
# वैतराग महात्म्य
# मञ्जुगर्तको कथा

नमो बुद्धाय । नमो धर्माय । नमो संघाय ।

॥ नमो श्री स्वयम्भू ज्योतिस्वरूपाय ॥

# गर्तेश्वर (गोपालेश्वर) वैतराग महात्म्य
# मञ्जुगर्तको कथा

मैत्री बोधिसत्वले श्री शाक्यमुनि भगवान बुद्धलाई दुबै हात जोडी बिन्ति गर्नुभयो- "हे भगवान बुद्ध, हजुरको अनुग्रहले कुम्भेश्वर वैतरागको कथा सुनिसकें । अब गर्तेश्वर भनिने गोपालेश्वरको कथा श्रवण गर्ने इच्छा भयो । हजुरको सर्वसत्व प्राणीहरूको उद्धारको कारणमा गर्तेश्वर महात्म्यको कथा आज्ञा गर्नुहोस् ।"

मैत्री बोधिसत्वको बिन्ति सुनेर श्री भगवान बुद्धले सकल सभामण्डलले सुनिने गरी गर्तेश्वरको कथा आज्ञा गर्नुभयो ।

परापूर्वकालमा नेपाल मण्डलको पाञ्चाल देशमा सकल शास्त्र विद्याले पारंगत भएका बुद्धपाल नामक श्रावकाचार्य गृहस्थी भिक्षु एक जना थिए । यो बिद्वान् बुद्धपालको आश्रममा धेरै नै शिष्यहरू आएर विद्याध्ययन गर्दथे र विद्वान् भई फर्कन्थे । यिनको नाम जताततै फैलिएको थियो ।

शिक्षक र विद्यार्थीहरू दुबैको प्रयास भएमा मात्र विद्यार्थीहरूले राम्ररी ज्ञान पाउन सक्तछन् । यस्ता विद्वान् शिक्षकको एउटा मूर्ख लठेब्रो छोरो थियो। त्यसको नाम मञ्जुगर्त भनी राखिएको थियो ।

पण्डित बुद्रपालले आफूकहाँ अध्ययन गर्न आउने शिष्यहरूलाई विभिन्न शास्त्र पढाई विद्वान् बनाई पठाए तापनि आफ्नो छोरा मञ्जुगर्तलाई उनले वर्णमालासम्म पनि पढाउन सकेनन् । पण्डित बुद्रपालले आफ्नो छोरालाई पढाउन धेरै नै कोसिस गरे । "बाबु, तिमीले राम्ररी लेख, पढ, ज्ञान गुण सिक । यहाँ मकहाँ पढ्न आउने शिष्यहरू सबै विद्वान् भएर फर्केका छन् तर तिमीले भने वर्णमालासम्म पनि लेखपढ गर्न सकेको छैन । तिमी अरु जस्तो होइनौ । तिमी म जस्ता पण्डितका छोरा हौ । तिमीले अरुले भन्दा राम्ररी पढ्नुपर्छ । तिमीले पढ्न सकेनौ भने मेरो नाममा दाग लाग्छ। मानिसहरूले अरुलाई पढाउन सके तापनि आफ्नो छोरालाई पढाउन नसक्ने कस्तो नालायक पण्डित हो भनी गिल्ला गर्नेछन् । यसकारण तिमीले मेहनत गरेर पढ्नै पर्दछ। तिमीले राम्ररी पढ्यौ भने म तिमीलाई राम्रो, मीठो खानेकुरा खुवाउँछु, राम्रो लुगा राखिदिन्छु, तिमीले भनेको कुरा पुऱ्याउँछु भनी जति फुसलाए तापनि

मञ्जुगर्तले केही पनि पढ्न सकेन । मञ्जुगर्तको यस्तो हालत देखी मानिसहरूले भन्नथाले- "यो बुद्धपाल पण्डितले अरुलाई भने जसले जे भन्यो त्यसलाई त्यही विद्या पढाउन सक्छ, परन्तु आफ्नो छोरालाई वर्णमाला समेत पढाउन सकेन । यो पडित र विद्वान् भएर के काम लाग्यो ?" मानिसहरूको यस्तो कुरा सुनेर पण्डित बुद्धपाल रिसाई आफ्नो छोरालाई बाँधेर समेत पढाउन थाले तर छोरालाई पढाउन उनी समर्थ हुन सकेन । बुद्धपालले आफ्नो छोराको स्मृति बढाउन थरिथरिका बुद्धिवर्द्धक औषधि खुवाए । पाठ पूजा गरे । तर उनको उपाय कुनै पनि काम लागेन । मञ्जुगर्त पटमूर्ख भएर नै रह्यो ।

पण्डित बुद्धपालले आफ्नो छोरा मञ्जुगर्तलाई फेरि तर्साएर पढाउन खोजे । तर तर्साएर पनि पढाउन सकेन, अब मेरो छोरालाई कसरी सिकाउनु पर्ला भनी उनले सोचे । यसलाई नपढाई त हुँदै हुँदैन । अब के गरुँ ? कहाँ पढ्न पठाउँ ? उनको मनमा आन्दोलन भइरह्यो । अब यसलाई महामञ्जुश्रीको निर्माणकाय मञ्जुदेवाचार्य गुरुको चैत्यस्थान गोश्रृंग पर्वतमा पठाएर सेवा गर्न दिएमा मात्र गुरुको अनुग्रहले यो मञ्जुगर्तले ज्ञान हासिल गर्न सकिएला । बुद्धपाल आचार्यले यही निश्चय गरे । उनले आफूकहाँ पढ्न आउने शिष्यहरूलाई बोलाएर भन्नुभयो- "हे मेरा शिष्यहरू, तिमीहरूले मैले पढाए बमोजिम पढी शास्त्रविद्या सिकिरहेका छौ तर मैले आफ्नो छोरा मञ्जुगर्तलाई पढाउन सकिनँ । यसकारण तिमीहरूले यसलाई स्वयम्भूको पश्चिमतिर रहेको मञ्जुश्री चैत्यको दर्शन र पूजा गराएर ल्याऊ । यसो गरे मात्र यो मञ्जुगर्तले ज्ञान पाउन सकिएला ।"

बुद्धपाल आचार्यले आफ्नो छोरा मञ्जुगर्तलाई आफ्ना शिष्यहरूको साथ लगाई स्वयम्भूको मञ्जुश्री पर्वतमा दर्शन पूजा गर्न पठाउनुभयो ।

शिष्यहरू गुरुसँग बिदा लिई गुरुका छोरा मञ्जुगर्तलाई लिएर स्वयम्भूमा जान प्रस्थान गरे। पाञ्चाल देशबाट स्वयम्भूमा जान भनी आउँदा तिनीहरूले उखुको बारी देखे । तिनीहरूले उखु भाँच्दै चुस्न थाले ।

उखु खाइसकेपछि शिष्यहरूले मञ्जुगर्तलाई भने- "हे मञ्जुगर्त, उखु खान पुग्यो, अब जाऔं।" तिनीहरूको कुरा सुनेर मञ्जुगर्तले भन्यो- "तिमीहरू मात्र जाऊ, म त आउन्न ।" शिष्यहरूले भने- "हे मञ्जुगर्त, तिमीले त्यसो भन्नु हुँदैन । तिमीलाई तिम्रो बुबाले पढ्न सिक्नको लागि पठाउनुभएको हो।" मञ्जुगर्तले भन्यो- "म त आउन्न, मलाई पढ्न लेख्न मन छैन। मलाई अक्षरभन्दा उखु नै मीठो लाग्छ।" शिष्यहरूले फेरि पनि भने- "हेर मञ्जुगर्त, तिम्रो पिता, हाम्रा गुरुले तिमीलाई मञ्जुश्री गुरुकहाँ पढ्न लेख्न पठाउनुभएको हो । हामीहरूले गुरुको आज्ञा अनुसार तिमीलाई मञ्जुश्री समक्ष लैजानै पर्दछ। जाउँ लौ। हिँड।" मञ्जुगर्तले जिद्दी गरेर भन्यो- "अहँ, म त यो उखु छोडेर आउन्न। तिमीहरू जहाँ जानुपर्छ जाऊ।" शिष्यहरूले मञ्जुगर्तलाई जति फकाई फुल्याई गर्दा पनि उखुबारी छोडेर आउन पटक्कै मानेन । स्वाद लिई लिई उखु खाइरह्यो ।

जति भन्दा पनि मञ्जुगर्तले नमानेपछि तिनीहरूले एउटा चमर मञ्जुगर्तको हातमा थमाई भने- "हेर मञ्जुगर्त ! तिमीले जति भन्दा पनि हामीहरूको कुरा मानेनौ। अब यति त गर। यो

चमर हल्लाउदै आकाशमा हेरेर "नमो वागीश्वराय।" भन यति भनी ती शिष्यहरूले आकाश माथि हेरेर मञ्जुश्री गुरुलाई स्मरण गरेर भने- "हे गुरु महामञ्जुश्री, हामीहरूका गुरुका छोरा यो मञ्जुगर्त साह्रै मूर्ख रहेछ। यसलाई हजुरकहाँ ल्याइपुऱ्याउन हाम्रा गुरु बुद्धपालले हामीहरूलाई पठाउनुभएको थियो। उखुको बारी पुगेपछि मञ्जुगर्त त्यहाँबाट आउन मानेन। त्यसलाई हामीहरूले मञ्जुश्री पर्वतसम्म ल्याउन सकेनौं। श्री मञ्जुश्री गुरु, हजुरले यो मञ्जुगर्तलाई ज्ञान गुण दिनुभई पढ्न लेख्नमा मन लगाउने गर्नुहोस्। हामीहरू हजुरमा श्रद्धा भक्तिले यही पुकार गर्दछौं।" यति भनी मञ्जुगर्तलाई आकाशमा हेरेर चमर हल्लाउँदै **"नमो वागीश्वराय"** भन्न लगाए र शिष्यहरू सबैले एकै स्वर गरी "नमो वागीश्वराय" भनी कराउँदै रहे।



महामञ्जुश्रीले साना बालकहरूले श्रद्धा भक्तिपूर्वक आफ्नो नाउँ लिई नमस्कार गरी कराइरहेको सुन्नुभयो । उहाँ ती बालकहरू कराइरहेको ठाउँमा आउनुभयो ।

महामञ्जुश्री गुरुलाई देख्नेबित्तिकै सकल बालकहरू महामञ्जुश्रीको पाउमा ढोग्न पुगे । तर मञ्जुगर्त एक जना भने गुरुलाई ढोग्न नगइकन टुलुटुलु हेरिरहे । अनि उनका साथीहरूले मञ्जुगर्तलाई भने- "हे मञ्जुगर्त, तिमीले महामञ्जुश्री गुरु पाल्नुभएको देखेनौ ? हे पटमूर्ख, तिमीले गुरुको गोडामा ढोग्न जानुपर्दैन ? साथीहरूले यसो भने तापनि मञ्जुगर्त गुरुलाई ढोग्न नगइकन त्यहीं उभिएर मुखमा मात्र हेरिरहे ।

जति भन्दा पनि नमानेकोले शिष्यहरू सबै मिली मञ्जुगर्तलाई हात समाती घिसार्दै लगेर उसको टाउको महामञ्जुश्री गुरुको पाउमा ढोग्न लगाए ।

त्यसबेला मञ्जुश्री गुरुले करुणा राखी मञ्जुगर्तको शिरमा हात राख्दै यस्तो आज्ञा भयो- "यस संसारमा कर्मभोग नगरी हुँदैन । महापण्डितको छोरा भए तापनि के गर्ने ? यो मञ्जुगर्त मूर्ख भइरहेको छ । अब भैगो उठ उठ । हे मञ्जुगर्त, तिम्रो अज्ञान नाश भएर क्षण मात्रमा तिमीलाई ज्ञान प्राप्त भएर सकल विद्याले पूर्ण होओस् ।" मञ्जुश्री गुरुले यस्तो आशिर्वाद दिनुभएर आफ्नो गोडामा ढोगिरहेको मञ्जुगर्तलाई महामञ्जुश्री गुरुले उठाउनुभयो ।

श्री मञ्जुश्री गुरुको आशिर्वाद पाउनेबित्तिकै एउटा अक्षर पनि पढ्न नसक्ने पटमूर्ख मञ्जुगर्त क्षणभरमा निद्राबाट बिउँझे

झैं भई सकल ज्ञानले पूर्ण भयो। अनि मञ्जुगर्तले महामञ्जुश्री गुरुको पाउमा ढोगी दुवै हात जोडी बिन्ति गरेर यस्तो स्तोत्र पाठ गऱ्यो।

*शशधरमिव शुभ्रं खड्ग पुस्ताङ्कपाणिं*
*शुरुचिरमति शान्तं पञ्चचीरं कुमारम्।*
*पृथुतरवरमोक्षं पद्मपत्रायताक्षं*
*कुमति दहन दक्षं मञ्जुघोषं नमामि ॥१॥*

चन्द्रमा जस्तो सेतो वर्ण हुनुभएका, हातमा खड्ग र पुस्तकको चिन्ह भएका अथवा खड्ग र पुस्तक हातमा लिनुभएका, राम्रो बुद्धि भएका, शान्त स्वभाव भएका, पाँच रंगको वस्त्र लगाउनुभएका, कुमार अवस्था हुनुभएका, ठूलो मोक्षको ज्ञान वरदान दिनुहुने, कमलको पातजस्तो आँखा भएका, कुबुद्धिलाई नाश गर्न चतुर हुनुभएका श्री मञ्जुघोषलाई नमस्कार छ ॥१॥

*मृगरिपुकृतयानं दत्तभक्त प्रदानं*
*सुरदनुजनमानं बोधिसत्व प्रधानम्।*
*अखिल गुणनिधानं सर्वविद्यानिधानं*
*करसरसिजवाणं मञ्जुघोषं नमामि ॥२॥*

सिंह बाहन भएका, भक्तजनहरूलाई वरदान दिनुहुने देव दैत्य मनुष्यले मानिएका, बोधिसत्वहरूमध्येमा प्रधान हुनुभएका, सम्पूर्ण गुणका खानी, चतुषष्ठि विद्याले पूर्ण हुनुभएका, नीलो कमल र चक्र हातमा लिनुभएका श्री मञ्जुघोषलाई नमस्कार छ ॥२॥

*विभृतसकल कोषं क्षालिता ज्ञान दोषं*
*स्मरण भजतोषं दूररागादि दोषम् ।*
*विहित ससुर घोषं सिद्धिदाख्याद्यदोषं*
*कृतजड परितोषं मञ्जुघोषं नमामि ॥३॥*

सकल शब्दशास्त्रको भण्डार हुनुभएका, अज्ञानरूपी दोषलाई पखाल्नुहुने, स्मरण र भजन गरेमा खुशी हुनुहुने, राग, द्वेष, मोहलाई टाढा पठाउनुभएका, देवलोकले स्तोत्र गरिनुभएका, दोष हटाई सिद्ध वरदान दिनुहुने अज्ञानरूपी जड नाश गर्नुहुने श्री मञ्जुघोषलाई नमस्कार छ ॥३॥

*गणपतिशरजन्म श्रीमहाकाल सिंह*
*परिवृत निजवर्गे भाविमिन्दीवराक्षम् ।*
*असि शर जपमाला पुस्तकं संवहन्तं*
*उरसि ललितमालां मञ्जुघोषं नमामि ॥४॥*

गणेश, कुमार, महाकाल, सिंह आदि आफ्ना परिवारले घेरिनुभएका, नीलो कमलको जस्तो आँखा हुनुभएका, खड्ग वाण जपमाला र पुस्तक हातमा लिनुभएका, छातीमा सुन्दर माला लगाउनुभएका श्री मञ्जुघोषलाई नमस्कार छ ॥४॥

*सुरपति समनापामीश श्री दाग्निरक्ष*
*पवन प्रमथपालैः संवृतं स्मेर वक्त्रम् ॥*
*खगपति रथगोगं ब्रह्मवन्द्यंरमोमा*
*विहित चरणभक्तं मञ्जुघोषं नमामि ॥५॥*

इन्द्र, यम, वरुण, कुवेर, अग्नि, राक्षस, वायु, महादेव आदि गणले घेरिएका, मुसुमुसु हाँसेको मुख भएका, गरुड वाहन भएका नारायण, ब्रह्मा, लक्ष्मी, पार्वती सबैले चरणमा भक्ति गरिनुभएका श्री मञ्जुघोषलाई नमस्कार छ ॥५॥

*यदसि कठिन धारा छेदमार्गा भिभारा*
*सकल सलिल धारा पातिनागांगमम्भः ।*
*बहुपरिचय स्थल्या भूमिरद्यापिरेजे*
*बहुतर महिमानं मञ्जुघोषं नमामि ॥६॥*

जुन हजुरको अत्यन्त धारिलो चन्द्रहास खड्गले पर्वत फोडी पानी बाहिर जाने बाटो बनाई पानीको प्रवाह गंगाजीमा मिसाई भूमिस्थल बनाइदिनुभयो, जुन अहिले पनि शोभित भइरहेको छ । यसरी धेरै महिमा भएका श्री मञ्जुघोषलाई नमस्कार गर्दछु ॥६॥

*भवदभिनवनुत्या तोषिता गुह्यदेवी*
*निखिल निगम सारा सुप्रकाशापि रेजे ।*
*भवजल निधिपारं दान कल्प दुमाग्रं*
*गलित बहुमहोग्रं मञ्जुघोषं नमामि ॥७॥*

हजुरले नयाँ स्तोत्र बनाई स्तुति गर्नुभएकोले श्री गुह्येश्वरी-देवी खुशी भएर प्रकाश हुनुभयो । सारा देश शोभायमान गरी बस्नुभएका र संसाररूपी पार तर्नुभएका कल्पवृक्षको अग्रभाग जस्तो हुनुभएका, जसले जे माग्न आउँछ त्यसलाई त्यही प्रदान गर्नुहुने, क्रोधीहरूलाई दमन गर्नुहुने श्री मञ्जुघोषलाई नमस्कार गर्दछु ॥७॥

*विभजति जनलोको धर्मधातुमहेशं*
*दशशतदलपद्मे संस्थितं ज्योतिरीशम् ।*
*तदपि तव प्रशस्तं देवमाहात्म्यमीशं*
*विभजति भुजगेशं मञ्जुघोषं नमामि ॥८॥*

हजार पात भएको कमलमा विराजमान भएका, ज्योति रूप धर्मधातु महेशलाई सकल लोकले भजन गरेकाछन् । वहाँको भन्दा पनि तपाईंको महात्म्य धेरै छ । हजुर सबैको ईश्वर हुनुहुन्छ । नागहरूका राजा शेषनागले पनि हजुरको भजन गर्दछन् । यस्ता श्री मञ्जुघोषलाई नमस्कार गर्दछु ॥८॥

*पठति य इदमित्थं मालिनी पद्यबन्धः*
*सभवति कविराजो वादि सिंहासनं तत् ।*
*सकल कविसभासु प्रोज्ज्वलद्वाक्सुधारः*
*कलित सकल विद्या भूषणो भव्य दक्षः ॥९॥*

जसले यो मालिनी छन्दको स्तोत्र पढ्छ वादीहरूको सिंहासन जितेका कविमध्येका राजा भएर सम्पूर्ण कविमण्डलको सभामा वाक्चतुर भई उज्ज्वल हुनेछ । सबै विद्याले पारंगत भई कल्याणको रूप र अत्यन्त चतुर हुनेछ ॥९॥

यो स्तोत्र पढेर मञ्जुश्री गुरुलाई चमरले हम्की मलाई क्षमा गर्नुहोस् भनी मञ्जुगर्तले बिन्ति गरे । त्यो स्तोत्र सुनेर "तिमी कवीश्वर होस्" भनी आशिर्वाद दिनुभई महामञ्जुश्री गुरु त्यहिंबाट अन्तर्धान हुनुभयो ।

त्यो ठाउँ फर्पिंग क्षेत्रको पूर्वतिर गर्तेश्वर अथवा गोपालेश्वर भन्ने मन्दिर रहेको छ ।

त्यसपछि मञ्जुगर्त सहित बुद्धपालका शिष्यहरू आफ्नो देश पाञ्चालमा नै फर्के । पाञ्चाल देशमा पुगेपछि आफ्ना गुरु बुद्धपालको घरमा गएर शिष्यहरूले यस्तो बिन्ति गरे- "हे गुरु, हजुरले आज्ञा गर्नुभए जस्तै गोपुच्छ पर्वत जान भनी जाँदा बाटोमा उखुको बारी भेटियो । त्यहाँ गएर हामीले उखु खायौं । मञ्जुगर्त त्यहाँबाट आउन मानेनन् । अक्षरभन्दा उखु मीठो छ भन्दै त्यहीं बसिरहे । त्यसबेला हामीहरू सबैले कति भन्दा पनि मञ्जुगर्त त्यहाँबाट आउन चाहेन । अनि मञ्जुगर्तलाई आकाशतिर हेर्न लगाई चमरले हम्कन लगाई हामीहरू सबै **"नमो वागीश्वराय"** भनी कराइरह्यौं । महामञ्जुश्री गुरु त्यहीं पाल्नुभयो । मञ्जुगर्तलाई वर प्रसाद दिनुभई ज्ञानवान् बताउनुभयो ।" यसरी शिष्यहरूले भएको सबै वृत्तान्त आफ्ना गुरु बुद्धपाललाई बताए ।

मञ्जुगर्तले पनि आफ्ना पिताको पाउमा ढोगी भएको सबै कुरा बताए । मञ्जुश्री गुरुको अगाडि पाठ गरेको मालिनी छन्दोबद्ध 'शशधर' स्तोत्र आफ्ना पितालाई सुनाए । आफ्ना छोराले महामञ्जुश्री गुरुको दर्शन पाएर ज्ञान वर प्रसाद प्राप्त गरेको र स्तोत्र पाठ गरेको सुनेर बुद्धपाल श्रावकाचार्य अत्यन्त खुशी भए ।

यो मञ्जुगर्तले पढेको "शशधरमिव शुभ्रं" भन्ने स्तोत्र जसले मनमा श्रद्धाभावपूर्वक पाठ गर्दछ । त्यसको अज्ञानता नाश भई शास्त्र पारंगत विद्वान् हुनेछ ।

यसप्रकार श्री शाक्य मुनीन्द्रले मैत्री बोधिसत्वलाई आज्ञा गर्नुभएको गर्तेश्वर वा गोपालेश्वरको कथा समाप्त भयो ।

| | |
|---|---|
| गोपालवत्यां यत्र संगमे कुमतिह्रद गर्तेश्वर वैतराग | |
| पीठ - दक्षिणकाली | मेला - भाद्रशुक्ल चतुर्थी |
| तीर्थ - गोपालेश्वरतीर्थ | स्नान - भृंगराज |
| दान - चमर | नाग - कुँवर |

॥ इति श्री स्वयम्भू महापुराणे

गर्तेश्वर वैतराग महात्म्यको कथा समाप्त ॥

नमो बुद्धाय । नमो धर्माय । नमो संघाय ।

॥ नमो श्री स्वयम्भू ज्योतिस्वरूपाय ॥

# धर्मश्रीमित्रको कथा

मैत्री बोधिसत्वले मन प्रसन्न गरेर दुबै हात जोडी श्री शाक्य मुनीन्द्र (श्रीघन तथागत)को चरणमा प्रणाम गरी यसरी बिन्ति गर्नुभयो- "हे शास्ता, हजुरको अनुग्रहले द्वादशतीर्थ र उपतीर्थका महात्म्यहरू को कथा सुनिसकें । अब आदिबुद्धको निर्माणकाय श्री स्वयम्भूलाई के कति कारणले श्री धर्मधातु वागीश्वर भनेका हुन् ? यो वृत्तान्त कृपापूर्वक आज्ञा गर्नुहोस् ।"

मैत्री बोधिसत्वको यस्तो बिन्ति सुनेर श्रीघन तथागतले आज्ञा गर्नुभयो- "हे मैत्री बोधिसत्व ! मन लगाएर सुन, श्री स्वयम्भूलाई धर्मधातु वागीश्वर भनी किन भनेका हुन् भन्ने कुरा म बताउँछु ।"

धेरै वर्ष पहिले मानिसहरूको आयु ३०,००० तीस हजार वर्ष भएको बेलामा शोभावती नगरमा श्री कनकमुनि नाम गरेका तथागत हुनुभएको थियो । वहाँ सम्यक् सम्बुद्ध हुनुभई सकल लोकको गुरु हुनुभई, सम्पूर्ण धर्मको राजा भई, मुनिहरूमध्ये मुनीन्द्र सर्वज्ञ हुनुभई देव मनुष्यहरूको शास्ता भइरहनुभएको थियो । त्यसबखत म सद्धर्मराज बोधिसत्व भएर कनकमुनि तथागतको संघमा रहेको थिएँ ।

हे मैत्री बोधिसत्व ! त्यही समयमा बाराणसीको काशी शहरको विक्रमशील महाविहारमा धर्मश्रीमित्र नामक एक महापण्डित भिक्षु थिए । उनले ब्राह्मण, क्षेत्री, वैश्य, शुद्र आदि चार वर्णका मानिसहरू र भिक्षुसंघसहित असंख्य लोकहरू जम्मा गरी नामसंगीतिको अर्थ व्याख्या गरी धर्मकथा सुनाइरहेका थिए । यसप्रकारको महा उत्तम नामसंगीतिको धर्मकथा सुनेर सम्पूर्ण सभालोकले सर्वधर्म सम्बुद्धको महात्म्य भनी प्रशंसा गरेर चित्त बोध गरी लोकजनहरूले धर्मश्रीमित्रलाई महापण्डित भनी धन्यवाद दिएका थिए । यसप्रकारले दिनदिनै विक्रमशील महाविहारमा नामसंगीतिको व्याख्या गरिरहनुभएको बेलामा एक दिन द्वादशाक्षर **अ आ इ ई उ ऊ ए ऐ ओ औ अं अः** बाह्र अक्षरको अर्थ प्रकाश गर्न नसकेकोले धर्मश्रीमित्रलाई के गरुँ, कसो गरुँ भयो । यसरी किंकर्तव्यविमूढ भएकोले त्यस दिनको व्याख्या त्यहीं रोक्नुभयो । आजको धर्मकथा चाँडै नै सकियो भनी श्रोतावर्ग आ-आफ्नो घर फर्के ।

महापण्डित धर्मश्रीमित्रको मनमा आन्दोलन भयो । श्रोतावर्गले यो महापण्डित भएर पनि द्वादशाक्षरको व्याख्या गर्न

सकेनन् भनी भन्नेछन् । अब मैले के गरुँ ? उनले वाराणसी क्षेत्रमा रहेका अरु पण्डितहरूसँग द्वादशाक्षरको अर्थ सिक्न र सोध्न जाने विचार गरेनन् । यसरी सोध्न जाँदा उसलाई त्यति पनि नजान्ने भनी हेला गर्लान् भन्ने डर थियो ।

धर्मश्रीमित्रले विचार गरे- महाचीनमा पञ्चशीर्ष पर्वतमा रहनुभएका महामञ्जुश्री गुरुको निर्माणकाय मञ्जुदेवाचार्य समक्ष गई द्वादशाक्षरको अर्थ र व्याख्याको ज्ञान प्राप्त गर्दछु । यहाँ महाभिक्षु, सकल विद्याका अधिपति, वाणीका स्वामी, सर्वसत्वका गुरु हुनुहुन्छ । यस्ता मञ्जुदेवाचार्यकहाँ गएर नामसंगीतिको द्वादशाक्षरको ज्ञान लाभ गर्ने मनसाय भई धर्मश्रीमित्र त्यही रातमा उठेर विक्रमशील महाविहारबाट कसैलाई थाहा नदिइकन महाचीन जानको निमित्त प्रस्थान गरे ।

त्यसबेला महाचीनमा जानको निमित्त नेपालको बाटो गरेर जानुपर्दथ्यो । धर्मश्रीमित्र काशीबाट नेपाल आइपुगे । यसबेला नेपाल मण्डलको साम्ह्यांगु पर्वतमा रहुनभएका परचित्त ज्ञान थाहा पाउनुहुने श्री मञ्जुदेवाचार्य गुरुले धर्मश्रीमित्र नेपालमा आएको पञ्चाभिज्ञद्वारा थाहा पाउनुभयो । धर्मश्रीमित्रले मलाई भेट्न महाचीनमा जान भनी आए । यसलाई मैले परिश्रम गराउँदिन । मेरो ऋद्धिबलद्वारा उसको अगाडि नै गएर दर्शन दिन्छु भनी विचार गरेर गोपुच्छ पर्वतबाट तल झर्नुभई आफू हलो जोत्ने किसान भएर बूढो मानिसको रूप धारण गरेर सिंह र शार्दूल दुईलाई हलोमा नारेर खेतमा हलो जोतिरहनुभयो ।



*गुरु महामञ्जुश्री बुढो किसान भेषमा सिंह र शार्दूल दुईलाई हलोमा नारेर खेतमा हलो जोतिरहनुभयो ।*

यसबेला चीनमा पञ्चशीर्ष पर्वत जान भनी आएका महापण्डित धर्मश्रीमित्र चीन जाने बाटो थाहा नपाएकोले कहाँ, कता जाउँ भइरह्यो । घाम अस्ताएर आकाश रातो भयो । चराहरू च्याँ चुँ कराई आकाशमा उड्दै आ-आफ्नो गुँड खोजिरह्यो । यता हेरे हरिया खेत, उता हेरे बाटो कतै देखिएन । दायाँ पनि खेत बायाँ पनि खेत, खेतका कान्ला कान्ला यता उता भड्किरह्यो । चीन जाने बाटो थाहा नपाएकोले खेतका कान्लाको बीचमा धर्मश्रीमित्र थिए । धर्मश्रीमित्र खेतको आली घुमिरहे । चीन जाने बाटो थाहा नपाएर यता उता हेर्दै जाँदा सिंह र शार्दूललाई हलो जोताएर रहेको एउटा मानिसलाई देखे । टाढाबाट हेर्दा एउटा बूढो किसान देखियो । त्यो बूढो किसानलाई धर्मश्रीमित्रले चीन जाने बाटो कता हो भनी सोधे ।

त्यो बूढो किसानले जवाफ दियो- "चीन जाने बाटो यही हो तर धेरै नै टाढा छ।" धर्मश्रीमित्रले भने- "टाढा भएर के भयो ? चीन जाने बाटो पत्ता लागे त भैहाल्यो।"

बूढोले भन्यो- "यस्तो होइन बाबु ! चीन जान निकै मुश्किल छ । निकै टाढा पनि छ । अहिले त साँझ हुन लाग्यो। घाम डुबिसक्यो। यसकारण आज एक रात मेरै घरमा बस। भोलि मैले चीन जाने बाटो बताइदिउँला, हुन्न र ?"

यसरी कुरा गर्दागर्दै धर्मश्रीमित्र अगाडि बढिरहृयो। बाटामा भेटिएको त्यो बूढो किसानले भन्यो- "मैले भनेको सुन, महाचीन देश हाम्रो नेपालबाट निकै टाढा छ। यति भनी त्यो किसान बूढोले हलो फुकाए । यसबेला धर्मश्रीमित्रले देखे हलोमा नारीएकाहरू त गोरु नभई सिंह र शार्दूल थिए। यो देखेर उनी चकित भए। उनी डराए।

त्यो बूढोले धर्मश्रीमित्रलाई बोलायो- "यहाँ आउनुस्।" धर्मश्रीमित्र डराएर फर्कन खोजे। त्यो किसान बूढो हलो छोडेर धर्मश्रीमित्रकहाँ आएर भन्यो- "हेर, बाबु, महाचीन यहाँबाट निकै टाढा छ र जानलाई गाह्रो पनि छ। आज एक रात मेरै घरमा बास बस्नुहोस् । भोलि सबेरै जानुहोस् । म बाटो बताइदिउँला।"

अँध्यारो हुँदै आयो। ती किसान बूढोले धर्मश्रीमित्रलाई कुरा गर्दै आफ्नो घरमा लगे। घरमा पुग्दा निकै अँध्यारो भइसकेको थियो।

मञ्जुदेवाचार्यले सिंह शार्दूल नारेर हलो जोतेको ठाउँ सवाभूमि भनी प्रसिद्ध छ। भेषधारी ज्यापु बूढोले धर्मश्रीमित्रलाई

आफ्नो घरको पिँढीमा बसाले । उनलाई बेलुकाको खाना त्यहीँ खुवाए । खाना खाइसकेपछि धर्मश्रीमित्र त्यहीँ बिछ्यौनामा पल्टे । उनलाई निद्रा आएको थिएन । भित्रबाट दैलोमा खापा लगाई त्यसमा चुकुल हालेको सुनियो । धर्मश्रीमित्रलाई निद्रा परेन । त्यो बूढो किसानका दुईटी तरुनी स्वास्नी रहेछन् । ती तीनजना भित्रतिर कुरा गरिरहेको बाहिर बसिरहेका धर्मश्रीमित्रले सुने । बाहिर बिछ्यौनामा पल्टिरहे तापनि निद्रा नआएकोले धर्मश्रीभित्रले विचार गरे । कस्तो घरमा बास बस्न आइपुगेको रहेछु । यस्ता बूढाका दुई दुईटी तरुनी स्वास्नी रहेछन् । के यिनीहरूलाई सुत्नु पनि पर्दैन कि ? कुरा गरिरहेछन् । यिनीहरू के कुरा गरिरहेका हुन् सुन्नुपर्‍यो भनी धर्मश्रीमित्र बिछ्यौनाबाट उठेर दैलोमा गई खापाको प्वालमा कान लगाई भित्रको कुरा सुनिरहे ।

भित्र यस्तो कुरा भइरहेको थियो- वरदा र मोक्षदा अर्थात् केशनी र उपकेशनीले आफ्ना पतिसँग बिन्ति गरे- "हे नाथ, हे मञ्जुदेवाचार्य, हजुरले साथै ल्याउनुभएको मान्छे को हो ? उसको घर कहाँ हो ? हेर्दा पण्डित भिक्षु जस्तो देखिन्छ । यिनी को हुन् ?"

पत्नीहरूको यस्तो प्रश्न सुनी मञ्जुदेवाचार्यले आज्ञा भयो- "हे केशनी, उपकेशनी ! यो वाराणसी देशबाट आएका महापण्डित धर्मश्रीमित्र हुन् । यो किन आएको हो भने यसले विक्रमशील महाविहारमा सकल सभालोकलाई नामसंगीति व्याख्या गरेर सुनाइरहेका थिए । एक दिन व्याख्या गर्ने क्रममा

द्वादशाक्षर पुग्दा ती बाह्र अक्षरहरूको अर्थ र व्याख्या गर्न नसकिएकोले साह्रै लज्जित भई हामीहरूको देश महाचीनमा गएर मसँग द्वादशाक्षरको अर्थ सुन्ने उद्देश्य लिएर आएका हुन् । अहिले हामीहरू यहाँ नेपालमा रहिरहेकाले यिनलाई महाचीनमा नपठाउन मैले ऋद्धि बलले यसलाई यहाँ बोलाएर ल्याएको हुँ तर यिनले मलाई चिन्न सकेनन् ।"

मञ्जुदेवाचार्यले आफ्ना श्रीमतीहरूलाई भन्नुभएको सबै कुरा दैलोको खापाको प्वालबाट सुनेकाले धर्मश्रीमित्रले विचार गरे- "अहो कसरी मैले गुरुलाई चिन्न सकिनँ ?" यसरी मनमा कुरा खेलाउँदै त्यहीं निदाए ।

रात सिद्धिएर बिहान भएपछि देवीहरू बाहिर आउनको लागि दैलोको खापा उघार्दा दैलोको संघारमा घोप्टो परेर बसेका धर्मश्रीमित्रलाई देखेर आफ्ना पति मञ्जुदेवाचार्यकहाँ बिन्ति गर्न गए- "हे नाथ । हिजोको पण्डित भिक्षु हामीहरूको ढोकाको दैलोमा घोप्टो परिरहेको छ । वरदादेवीको कुरा सुनेर श्री मञ्जुदेवाचार्य गुरुले धर्मश्रीमित्रलाई हात समातेर उठाउनुभयो र भन्नुभयो- "हे धर्मश्रीमित्र । उठ उठ ।" यसरी गुरु मञ्जुदेवले उठाउनु भएपछि धर्मश्रीमित्र निद्राबाट ब्यूँझिएर गुरुको पाउमा ढोगी बिन्ति गरे- "भो गुरु ! मैले हजुरलाई चिन्न सकिन । क्षमा गर्नुहोस् ।

हे मञ्जुदेवाचार्य गुरु ! हजुरलाई कोटि कोटि नमस्कार । हे गुरु ! म यहाँ आएको कारण हजुरले बुझ्नुभएकै छ । हे गुरु ! मलाई नामसंगीतिमा रहेको द्वादशाक्षरको अर्थ बताउनु होस् यसप्रकार धर्मश्रीमित्रको बिन्ति सुनेर मञ्जुदेवाचार्यले आज्ञा

गर्नुभयो- "हे धर्मश्रीमित्र ! अभिषेक नलिएकालाई द्वादशाक्षरको अर्थ बताउनु हुँदैन । यसकारण तिमी पहिले विधिपूर्वक अभिषेक लिइकन मात्र द्वादशाक्षरको अर्थ सुन्ने गर ।"

गुरुले आज्ञा गर्नुभएको सुनेर धर्मश्रीमित्रले दुबै हात जोडेर मञ्जुदेव गुरुको चरणमा ढोगेर भने- "हे गुरु ! हजुरले पहिले अभिषेक नै लेउ भन्नुभयो तर मसँग अभिषेक लिनलाई पूजा सामग्री तयार गर्न र गुरु-दक्षिणा दिन धन सम्पत्ति केही पनि छैन । मैले के दक्षिणा दिउँ ? दक्षिणा नदिइकन पढेको सिद्धि प्राप्त हुँदैन । फल मिल्दैन । बिनादक्षिणा ज्ञानीजनले गुरुसँग विद्या लिनु हुँदैन । अब मैले अभिषेक लिनको निमित्त के गरुँ ?"

धर्मश्रीमित्रको यस्तो कुरा सुनेर मञ्जुश्री गुरुले आज्ञा गर्नुभयो- "हे धर्मश्रीमित्र ! मन भएपछि, श्रद्धा भक्ति भएपछि "धन सम्पत्ति किन चाहियो ? जसको श्रद्धाभाव नै छैन ऊसँग धन भएर पनि के गर्ने ?"

गुरुप्रति श्रद्धाभाव भएको शिष्य भयो भने अरु केही चीज चाहिँदैन । गुरु त्यसैमा सन्तुष्ट हुनेछ । धनले सिद्धि प्राप्त हुँदैन । सम्पत्तिले पनि सिद्धि प्राप्त हुँदैन । श्रद्धाभाव भक्ति भएको, चित्त शुद्ध भएको, क्लेशावरणले युक्त नभएको, तृष्णा क्षय भएको, गुरुभन्दा मैले बढी जानेको छु भनी घमण्ड नगर्ने, गुरुलाई दोष दिएर कुरा नगर्ने, गुरुद्रोह नगर्ने यस्ताले मन्त्र लिएर न्यासध्यान गरेमा सिद्धि प्राप्त हुन्छ । यसको विपरीत गर्नेलाई सिद्धि प्राप्त हुँदैन । गुरुलाई श्रद्धा भक्ति भएको शिष्य चाहिन्छ । त्यस्ता शिष्य प्राप्त भएमा गुरुलाई सन्तोष हुन्छ । धनले सन्तोष हुँदैन । तिमीसँग श्रद्धाभाव छ, गुरु सेवा छ । अब तिमीले मसँग धन छैन भनी धन्दा मान्नु पर्दैन । सन्देह गर्नु पर्दैन ।

गुरुको यस्तो आज्ञा सुनेर धर्मश्रीमित्रले मन आनन्द गरी हर्षपूर्वक गुरुको चरणमा प्रणाम गरी बिन्ति गरे- "हे गुरु ! हजुर श्रद्धा भक्तिभावले मात्र पनि सन्तुष्ट हुनुहुन्छ भने मैले हजुरको सेवाभाव गर्ने दृढ निश्चय गरें । हे गुरु, मलाई कृपा दृष्टिले हेर्नुभएर यथा विधि दीक्षा दिनुभई द्वादशाक्षरको अर्थ बताउनुहोस् । म हजुरको चरणमा यही बिन्ति चढाउँछु ।"

धर्मश्रीमित्रको यस्तो बिन्ति सुनेर गुरुले आज्ञा गर्नुभयो- "हे वत्स, तिम्रो श्रद्धाभाव भएपछि म तिमीलाई अभिषेक दिन्छु । तिमीले चित्त प्रसन्न गरेर राम्ररी धारण गर ।"

मञ्जुदेवाचार्यले श्री स्वयम्भू ज्योतिरूपका अग्रमा हीरा, नील, पुष्पराग, मणिक र पन्ना चूर्ण गरी बनाएको पोतासले विधिपूर्वक श्री धर्मधातु वागीश्वरको मण्डल लेखी त्यस मण्डलमा राम्ररी आराधना गरी विधिपूर्वक पूजाभाव गरेर आफूले पनि प्रसन्न चित्त गरी धर्मश्रीमित्रलाई मण्डल दर्शन दिएर पञ्चाभिषेक तथा चतुर्दशाभिषेक आदि दिएर द्वादशाक्षरको गुह्य अर्थ, बाह्य अर्थ आदि बताउनुभयो । यसपछि गुरुले आज्ञा गर्नुभयो- "हे शिष्य ! तिमी मैले बताएको द्वादशाक्षरको गुह्य अर्थ र बाह्य अर्थ पात्र विचार गरेर मात्र बताउनु । श्रद्धा भाव भक्ति नहुनेहरूलाई बताउनु हुँदैन । यो सुन्नलाई फकाउन सक्छ, धन दिन सक्छ, लोभ देखाउन सक्छ, ऐश्वर्य दिन सक्छ परन्तु विचार नगरिकन यो कसैलाई भन्नुहुँदैन । गाली गरेर, रिस गरेर, तर्साएर सुन्ने कोसिस गर्न सक्छन् तैपनि विचार नगरिकन यो भन्नुहुँदैन । जोसँग श्रद्धा छ त्यसैलाई मात्र बताउनु । भाव भक्ति हुनेलाई मात्र बताउनु ।



मञ्जुदेवाचार्य (गुरु महामञ्जुश्री)ले धर्मश्रीमित्रलाई अभिषेक दिन
श्री स्वयम्भु ज्योतिरुपको अगाडी पूजा गरिरहनु भएको ।

हे शिष्य ! अहिले तिमीसँग गुरुदक्षिणा केही नभए तापनि तिम्रो श्रद्धा भक्तिभाव भएपछि त्यसैबाट म सन्तुष्ट छु । जहाँ उत्तम शिष्य हुन्छ त्यो धन सम्पत्ति भन्दा पनि ठूलो छ । यसो भएको हुँदा गुरुलाई शिष्य जस्तो उत्तम ऐश्वर्य अरु छैन । शिष्यलाई पनि गुरुजस्तो उत्तम अरु केही हुँदैन । अब आजदेखि तिमी मेरो परम शिष्य भयौ । छोरो समान भयौ । यति आज्ञा गर्नुभई श्री धर्मधातु वागीश्वरको अभिषेक दिनुभई मण्डलमा भएका देवदेवीहरू क्रमश: देखाएर श्री नामसंगीतिको द्वादशाक्षरको गुह्यार्थ र वाह्यार्थ भन्नुभएर धर्मश्रीमित्रलाई दीक्षा दिनुभयो ।

यसबेला धर्मश्रीमित्रले मञ्जुदेवाचार्यबाट अभिषेक लिएर अभिषेकको अर्थ लाभ गरेर द्वादशभूमिको ज्ञान प्राप्त गरे । यसपछि धर्मश्रीमित्रले मञ्जुदेवाचार्य गुरुलाई आफ्नो शरीरको रत्नमण्डल बनाई आत्मभावले गुरु दक्षिणा समर्पण गर्दै चरण कमलमा अष्टांग प्रणाम गरी यसप्रकार बिन्ति गरे- "भो गुरु ! हजुरको कृपाले, हजुरको दयाले मेरो मनोवाञ्छा पूर्ण भयो । सद्गुण अर्थ मैले धारण गरेँ । म सदाकाल हजुरको शरणमा रहेर जसरी यहाँ हजुरले आज्ञा गर्नुभयो त्यसरी नै चलाइरहन्छु । हे गुरु ! यसैले हजुरले बोधिज्ञान साधना गर्ने ज्ञान मलाई आज्ञा गर्नुहोस् ।"

आफ्ना शिष्यको यस्तो बिन्ति सुनेर गुरु मञ्जुदेवले शिष्यको शुद्ध चित्त देख्नुभई सम्बोधिचर्याको क्रम आज्ञा गर्नुभयो- "हे साधु ! सदाकाल यस संसारमा बोधिज्ञान साधना गरेर संसारको हित गर्नको निमित्त बोधिचर्या ब्रत चलाऊ । बोधिब्रत चलाएमा यस धर्मको प्रभावले पुण्य शरीर भएर, मन वचन शरीर शुद्ध भएर बोधिसत्व हुनेछ । पुनः महाभिक्षु पद लाभ गरेर सद्गुण सम्पत्तिको खानी भएर बोधिसामग्रीले सम्पूर्ण भई राग, द्वेष, माया, मोह आदि मारचर्या नाश भएर श्री सम्यक् सम्बुद्ध पद प्राप्त हुन्छ ।

हे धर्मश्रीमित्र ! यति मेरो कुरा सुनेर, मन सामाधान गरी बारम्बार सम्झना गरेर बुद्ध धर्म संघको शरणमा रही ध्यान गरेर संसारको हितको निमित्त चलाऊ । यसपछि संसार हित गरेर सम्बोधिचित्तमा निश्चय गरेको छ वा छैन भनी हेरी श्रावकयान, प्रत्येकयान, महायान यी तीन यानको धर्म उपदेश

दिएर बोधिचर्यामा मन लगाऊ। यसरी चलाएको धर्मको प्रभावले चाँडै सुद्धात्मा भएर सम्बुद्ध पद पाएर जगतमा धर्म सुनाएको फलले निर्वाण पद प्राप्त हुन्छ । हे वत्स, धर्मश्रीमित्र ! यति ज्ञानमा मन दृढ गरेर आफ्नो विक्रमशील महाविहारमा गएर पहिलेजस्तै नामसंगीतिको व्याख्या गरेको म पनि एकचोटी हेर्न आउँला हुन्न र ?"

यति आज्ञा गर्नुभई धर्मश्रीमित्रलाई गुरु मञ्जुदेवाचार्यले बिदा दिनुभयो। गुरुको यस्तो आज्ञा सुनेर धर्मश्रीमित्रले कृताञ्जली गरी गुरुलाई हेरी बिन्ति गरे- "हे गुरु । यतिका ऋद्धि देखाउनु भएर पनि मैले हजुरलाई चिन्न सकिन । यस्ताले हजुर मकहाँ धर्मदेशना गरेको सुन्न आउनुहँदा म मूर्खले हजुरलाई चिन्न सकुँला र ? हजुर महाऋद्धिवान्, विश्वरूप लिन सक्नुहुन्छ ! हजुरलाई मैले कसरी चिन्न सकुँ ? हजुर कुन रूपमा पाल्नुहुन्छ ?"

यति बिन्ति सुनी गुरुले आज्ञा गर्नुभयो- "हे वत्स ! म जुन रूपमा आए तापनि हातमा नीलकमल लिएर आएकोलाई म भनेर जानिलेऊ ।"

यति गुरुको आज्ञा पाएर धर्मश्रीमित्रले बिन्ति गरे- "हे गुरु ! मलाई देखेर हजुर सर्वदा काल प्रसन्न हुनुहोस् । मैले आज हजुरलाई गुरु दक्षिणा केही चढाउन सकिन । यस्तो मेरो सहस्र अपराध क्षमा गर्नुहोस् । हे गुरु ! हजुरको आज्ञा अनुसार संसार उद्धार गर्ने हेतु नामसंगीतिको अर्थ व्याख्या गर्न म जान्छु भनी धर्भश्रीमित्रले चित्त प्रशन्न गरेर श्री मञ्जुदेव गुरुको चरणमा ढोगी गुरुआमाहरू वरदा र मोक्षदा दुबैको पाउमा पनि ढोगी बिदा लिई धर्मश्रीमित्र आफ्नो देश वाराणसी विक्रमशील

महाविहामा जान भनी गुरुकहाँबाट काशी देशतर्फ हेरी फर्कन लागे ।

धर्मश्रीमित्र काशी देश पुगे । त्यहाँ पुगेको भोलिपल्ट नै भक्तजनहरू धेरै नै जम्मा गरेर विक्रमशील महाविहारमा सभामण्डल बनाएर नामसंगीतिको व्याख्या गरेर पात्रअनुसार द्वादशाक्षरको गुह्य अर्थ र वाह्य अर्थ प्रकाश गरेर धर्मकथा सुनाइरहे । यस्तो समयमा श्री मञ्जुदेवाचार्य गुरु आफ्नो शिष्य धर्मश्रीमित्रको मन बुझ्न भनी यस नेपालमण्डलबाट काशी देशको विक्रमशील महाविहारको समीप पुग्नुभयो ।

मञ्जुदेव गुरुले आफ्नो सक्कली रूप छोडी महाकुष्ठको रूप धारण गरी कालो मैलो जीर्ण लुगा लगाएर नाकबाट सिंगान बगाउँदै, मुखबाट र्‍याल चुहाउँदै जिउभरि दुर्गन्ध फैलाएर झिंगा भन्काएर हातमा नीलकमल लिएर लौरो टेक्दै विक्रमशील महाविहार पस्नुभयो ।

धर्मश्रीमित्रले कथावाचन गरिरहेको ठाउँमा कथा सुनिरहेकाहरूलाई दुर्गन्ध फैलाउँदै साह्रै घिनलाग्दो एउटा बूढो मानिस आएको देखेर कथा सुनिरहेका मानिसहरूले हल्लीखल्ली गरे । धर्मश्रीमित्रले यो स्वर सुनेर किन कराएका होलान् भनी आवाज आएकोतर्फ हेर्दा त्यहाँ नीलकमल हातमा लिइरहेका, हेर्दैमा घिनलाग्दो एउटा बूढो मानिसलाई देखे । देख्नेबित्तिकै नीलकमलको चिन्हले गुरु आइपुग्नुभयो भनी देखिहाले । उहाँलाई गुरु भन्न अप्ठेरो भएकोले धर्मश्रीमित्रले अर्कोतर्फ हेरी कथा भनिरहे । त्यो महारोगी बूढो जतातिर हेरेर धर्मश्रीमित्रले कथा भनिरहेका थिए त्यतै गए । त्यो बूढा त्यतातिर देखा परेकोले धर्मश्रीमित्रले कथा नै भनिरहेका थिए ।



धर्मश्रीमित्रले धेरै नै भक्तजनहरू जम्मा गरेर सभामण्डलमा द्वादशाक्षरको व्याख्या गरिरहँदा गुरु महामन्जुश्री बुढो भेषमा हातमा नीलकमल लिइ देखा पर्नु भएको

धर्मश्रीमित्रले नीलकमलको चिन्हले त्यो महारोगी बूढो मानिस भेष बदलेर आउनुभएका आफ्नै गुरु हुन् भनी चिने । अहो आश्चर्य ! गुरु मञ्जुदेवले कस्तो कुष्ठरूप धारण गरी कालो मैलो लुगा लगाई, हेर्दैमा घिन लाग्ने गरी रूप धारण गरेर आउनुभएछ । अब मैले के गरुँ ? अहिले नै उठेर गुरुलाई नमस्कार गर्न जाउँ भने यहाँ रहेका लोकजनले मलाई मगन्ते महारोगीको शिष्य भनी हेला गर्नेछन् । गुरु होइन भनुँ भने पनि उहाँ साक्षात् मञ्जुदेवाचार्य नै हुनुहुन्छ । अब मैले के गर्नुपर्ला ? यसरी मनमा तर्क वितर्क भइरह्यो । धर्मश्रीमित्रले गुरुलाई देखेर पनि नदेखे जस्तोगरी कथा वाचन गरिरहे । गुरु भने महारोगीको रूपमा जता जता हेरेर कथा भन्थे त्यतैतिर पुग्नुहुन्थ्यो ।

धर्मश्रीमित्रले गुरुलाई गुरु भन्न गाह्रो मानेकोले चाँडै नै कथा वाचन सिध्याए । धर्म कथा सुन्न आउने श्रोताहरू पण्डितजीले आज चाँडै नै कथा सिध्याउनुभयो भनी कुरा गर्दै आ-आफ्नो घर गए । गुरु पनि विमुख भएर बाहिर गए ।



*धर्मश्रीमित्रले सभामण्डल खाली भएपछि बुढोलाई महामञ्जुश्री गुरु भनी ढोग्दा उनको आँखा गुरुको पाउमा खसेको ।*

यसबेला कथा सुन्न आएका श्रोताहरू सबै गइसकेकाले त्यहाँ कोही पनि बाँकी रहेनन् । यसबेला धर्मश्रीमित्र आसनबाट उठेर गई भर्खर मात्र देखेजस्तो गरी गुरुको चरणकमलमा शिर निहुराई ढोगे । यसरी ढोग्नलाई धर्मश्रीमित्र हत्तरपत्तर दगुरेर गएका थिए । धर्मश्रीमित्रले बिन्ति गरे "हे गुरु ! हजुर भरखर मात्र पाल्नुभएको ? हजुर पाल्नुभएको मैले देखिन । पछि मात्र हजुरले हातमा लिनुभएको नीलकमलले गर्दा हजुरलाई चिनें ।" यति भन्दै उनले गुरुको पाउमा ढोगे ।



*धर्मश्रीमित्रको आँखा महामञ्जुश्री गुरुको पाउमा खसेको*

यसबेला गुरुलाई देखेको भए तापनि देखेको छैन भनी असत्य बोलेको र देखे पनि नदेखे जस्तै गरेको पापले धर्मश्रीमित्रको आँखा गुरुको पाउमा खसे ।

धर्मश्रीमित्रले आँखाले देखेन, ऊ अन्धो भयो । गुरुद्रोह गरेको पापले गर्दा पश्चाताप गरी गुरुलाई यसरी बिन्ति गरे- "हे गुरु ! म अज्ञानीको अपराध क्षमा गर्नुहोस् । मैले गुरुको रूप देखी गुरु भनी भन्न अप्ठेरो मानी देखे पनि नदेखे जस्तो गरें र देखेको थिइन भनी भूठो बोलें । गुरुद्रोह गरें । हे गुरु ! मेरो यो अपराध क्षमा गर्नुहोस् । मैले आँखाले देख्न छोडें । मलाई आँखा देख्ने गर्नुहोस् ।"

यसरी अपशोच गरी कराउँदै विलाप गर्दै रहे। धर्मश्रीमित्रले यसरी विलाप गरेको देखी कृपाका सागर समान भएका मञ्जुदेवाचार्यले शिष्यप्रति अति करुणा राखी भन्नुभयो- "धर्मश्रीमित्र ! अब मैले के गरुँ ? तिमीले लज्जावश मलाई गुरु भनी मान्न सकेनौ । देखे पनि देखेको छैन भन्यौ । असत्य कुरा गर्‍यौ । यो गुरुद्रोहको फल तिमीले भोग्नुपर्‍यो । आफूले रोपेको पापको फल आफैले भोग्नुपर्दछ । आफूले गरेको नराम्रो फलको भोग मैले गर्दिन भन्न पाइँदैन । यो अरुले भोग्न सक्दैन । तिमीले गुरुद्रोह गरेको फल भोग्नुपर्‍यो । यसलाई म हटाउन सक्दिन ।

यसो भए तापनि हे धर्मश्रीमित्र ! तिमीले आँखाले नदेखे पनि भित्री ह्रदयले ज्ञानदृष्टिले, जसरी आँखाले देखिने हो त्यसरी देखोस् । ज्ञानदृष्टिले देख्ने भएकोले तिम्रो नाम अब उप्रान्त ज्ञानश्रीमित्र भनी प्रचार हुनेछ ।

अब तिमीले ज्ञानदृष्टिले विचार गरेर पहिलेजस्तै धर्म उपदेश गरिराख । बोधिचर्या चलाएर बस ।" यति आज्ञा गरी मञ्जुदेवाचार्य त्यहाँबाट फर्केर नेपालमण्डल गोपुच्छ पर्वतमा नै फर्कनुभयो ।

त्यसपछि वरदा र मोक्षदा देवीहरूले पादार्घ गराई आफ्नो आश्रममा जानुभयो । यसबेला वरदा र मोक्षदा देवीहरूले बिन्ति गर्नुभयो- "हे स्वामी ! हजुरको दुई पाउमा आँखाका चिन्ह कसरी देखिएको हो ?" यो कुरा सुनेर मञ्जुदेवाचार्यले धर्मश्रीमित्र ज्ञानश्रीमित्र भएको सबै वृत्तान्त बताउनुभयो ।

धर्मश्रीमित्र त्यस दिनदेखि ज्ञानश्रीमित्र नामबाट प्रख्यात भई ज्ञानदृष्टिले सकल पदार्थ थाहा पाएर पहिलेजस्तै सद्धर्म व्याख्या गरेर संसार हित गर्ने काम गरिरहे ।

भगवान बुद्धले आज्ञा गर्नुभयो- "हे मैत्री बोधिसत्व ! जुन दिन धर्मश्रीमित्रलाई धर्मधातु मण्डल निर्माण गरेर दीक्षाभिषेक दिइएको थियो त्यस दिनदेखि श्री स्वयम्भू ज्योतिरूप श्री धर्मधातु वागीश्वर भनी प्रख्यात भयो । धातु भनेको सबै धर्मको खानी हो । सकल वचनको मालिक हो । उहाँलाई दर्शन गरेर अभिषेक प्राप्त भएमा सकल गुह्य अर्थ बोध भई सकल पाप मुक्त भएर मोक्षपद प्राप्त हुन्छ । यसको निम्ति जसले यस्तो ज्ञान पाएर स्वयम्भू क्षेत्रमा रही श्रद्धा भक्तिपूर्वक धर्मधातु मण्डल बनाएर माघ शुक्ल पञ्चमीका दिन श्री वागीश्वर मञ्जुश्री गुरुलाई स्मरण गरेर पूजाभाव गर्दछ, ध्यान गर्दछ, बोधिचित्त उत्पत्ति गरेर मन्त्र धारणी पाठ गर्दछ त्यसलाई सकल विद्या लाभ भई पारंगत हुन्छ र अन्त्यमा निवृत्तिमार्ग प्राप्त हुन्छ ।

यसो भएको हुँदा जुन मानिसले धर्मश्रीमित्रलाई धर्मधातुको दीक्षा दिएको माघ शुक्ल श्रीपञ्चमीका दिन सकल तथागतहरूका घर भइरहेको धर्मधातु मण्डल बनाएर श्रद्धाभावले पूजा गर्दछ, त्यो मानिस शास्त्रादि सकल विद्याले पारंगत हुन्छ । काय वाक्चित्त शुद्ध भएर सकल ऋद्धि सिद्धि प्राप्त हुन्छ । महाभिज्ञ पद लाभ गरेर सद्धर्म चलाउने हुन्छ । यसपछि क्रमशः बोधि सामग्रीले पूर्ण भएर तीन भेदले बोधिज्ञान लाभ गरेर सम्बोधि ज्ञानको आश्रय हुन्छ । संसार हित गर्नलाई बोधिचर्या व्रतमा

रहेर बोधिसत्व महासत्व हुन्छ । चतुर्ब्रह्म विहार प्राप्त गरेर सदा मंगल भएर श्री सम्यक् सम्बोधि ज्ञान लाभ गरेर निर्वाण लाभ गर्ने हुन्छ ।

श्री शाक्यसिंह भगवानको आज्ञा सुनेर सकल लोकहरू बोध भई महाआनन्दले रहे । इति ॥

॥ इति श्री स्वयम्भू महापुराणे धर्मश्रीमित्रको कथा समाप्त ॥

। समाप्त ।

# सिद्धि विहारको परिचय

-प्रा. मुनीन्द्ररत्न वज्राचार्य

नेपाल एक बौद्ध भूमि हो । परापूर्वकालदेखि नै बौद्ध संस्कृति, साँस्कृतिक सम्पदा रीतिथितिले यस देशलाई गौरवान्वित गरिरहेको छ। नेपालका राजा, महाराजा, आचार्य र श्रद्धालु भक्तजनहरूले यहाँ धेरै बौद्ध विहार, चैत्यको स्थापना गरेका छन् । यसरी विहार चैत्य स्थापनाको पुण्यले समस्त नेपालीहरु आफ्नो जीवनमा सुख



शान्तिले बस्न सकियो । बौद्ध बिहार, चैत्य स्थापना गर्ने सिलसिलामा असन तक्षेबहालका तान्त्रिक सुरतवज्र वज्राचार्यका दरसन्तानहरूमा प. सिद्धिहर्ष वज्राचार्यका परिवारहरूमा धर्मचित्त उत्पन्न भई स्वयम्भू भुवनखेल (भुइख्यों:) को उत्तर दिशामा वनस्थली जाने बाटोको दाहिनतिर भचातगिं भन्ने ठाउँमा एउटा चैत्यको स्थापना गरियो । यस विहारको स्थापनाको शुभ साइत ने. सं. १०६३ पौष शुक्लका दिन जीवन्यास गरियो । पछि नेस १०६४ साल जेष्ठ पूर्णिमा ज्यापुन्हिका दिन जीवन्यास पूजा समाप्त गरी बाहा: पूजा भनी काठमाण्डौका विहारहरूमा पूजा गरी स्थापना गरियो । सिद्धि विहारको आकार र स्वरूप नमराको नमोबुद्ध चैत्यसग मिल्दोजुल्दो छ । यो चैत्य गोलाकार भई बोधिमण्डप समेत स्थापना गरिएको छ । चैत्यको चारै दिशामा पंचबुद्धको प्रतीक स्वरूप ढुंगाका मूर्तिहरूमा अक्षोम्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि आदि छन् । यो चैत्यको ऊँचाइ बाऱ्हफुट जति छ । चैत्यको पश्चिममा नमोबुद्धमा जस्तो एउटा सत्तल र मूर्ति अवस्थित थियो । पछि यो मूर्ति चोरेर लगियो । हाल यहाँ मूर्ति खाली नै छ ।



सिद्धि विहारको आफ्नै विशेषता र महत्त्व रहेको छ । सिद्धि विहारको स्थापना भएको इतिहास धेरै पुरानो नभए तापनि यो विहार नमराको नमोबुद्ध चैत्यको महत्त्व जस्तै यसको पनि महत्त्व देख्न सकिन्छ । नमोबुद्ध चैत्य ऐतिहासिक रूपमा ख्याति हुनुमा बौद्ध अवदानमा उल्लेख भएको महासत्त्व राजाको अमूल्य दानलाई सम्झन सकिन्छ । बौद्ध अवदान अनुसार नमोबुद्ध चैत्य निर्माण गर्दा महासत्त्व राजाको अस्थिपंजर राखी बनाएको हो । यसको पौराणिक कथा अनुसार परापूर्वकालमा गन्धकुट पर्वत नमरामा महासत्व राजा जंगलमा घुम्न जाँदा असक्त बघिनीले आफ्ना बच्चाहरूलाई दूध ख्वाउन नसकी । मर्ने अवस्था रहेकोले यो देखि महासत्त्व राजाको मनमा करुणा जागी आफ्नो शरीरको मासु तरवारले काटेर ख्वाई बाघ र डमरुहरूलाई बचाई आफ्नो प्राण त्याग गरेको उल्लेख पाइन्छ । सोही महासत्त्व राजाको अस्थिपंजर राखी बनाएको उक्त चैत्यलाई निकै



महत्त्व दिई सम्झने गर्दछ। नेवारहरू आज सम्म पनि आफ्ना परिवारमा कोही मृत्यु भएमा उनको मुक्ति तथा निर्वाण कामना गरी सुखावती भुवनमा बास होस् भन्ने कामना गरी यहाँ १०८ दीप प्रज्वलन गर्न जाने गर्दथ्यो। यो ठाउँ काठमाण्डौबाट ३५ किमि टाढा छ र बाटो पनि निकै नराम्रो तथा विकट पनि छ। भनिन्छ अचेल नमरा नमोबुद्धसम्म जान कठीन भएकोले कोही कोही यहीं दीप प्रज्वलन गर्न आउने गरेको छ। यो सिद्धि विहारको आकृति नमोबुद्ध नमराको विहार जस्तै देखिन्छ।

सिद्धि विहारको महत्त्व हुनुको कारण यो स्वयम्भूको प्रवित्र ठाउँमा रहेको छ। यहाँ बाहा पूजा भनी बुद्धपुजा गर्न आउनुपर्दछ। अर्को कारण यस विहारका संस्थापक पं. सिद्धिहर्ष वज्राचार्यको आफ्नै व्यक्तित्वको कारणले पनि हो। पं. सिद्धिहर्ष वज्राचार्य नेपालको इतिहासमा एक प्रसिद्ध विद्वानको रूपमा चिनिन्छ। उनको जन्म ने.सं. ९९९ श्रावण शुक्ल दशमिका दिन सुरतश्री महाविहारमा भएको थियो। उनले वीर पुस्तकालयमा काम गर्दा मल्लकालीन हिन्दू र बौद्धधर्मका ग्रन्थ र नेपालभाषा साहित्य र अन्य विविध पुस्तकको अध्ययन गरी अभिलेख राख्ने जागीर थियो। यही ज्ञानको कारण बौद्ध धर्म सम्बन्धी ज्ञान र लिपि विशेषज्ञ पनि हुनुहुन्थ्यो। यस्तो विद्वतालाई बुझी पं. सिद्धिहर्ष वज्राचार्यकहाँ स्वदेशी तथा विदेशी विद्वानहरू विभिन्न ज्ञान लिन आउने गर्दथे। उनीसंग नेपालभाषा, लिपि र बौद्ध धर्मसम्वन्धी ज्ञान लिन आउने प्रसिद्ध विद्वानहरु यसप्रकार छन्- फ्रान्सका प्रो. सिल्भा लेभी, रोम यूनिभर्सिटीका प्रो. जिसेटाप टुची, इटालीका डा. आल्र्ड लेभी, जापानका प्रो. रोसाम्बिक सासाकी, प्रो. कावागुची, भारतको बम्बइस्थित पं. दत्तात्रय, पं. हरप्रसाद शास्त्री, विनयतोष भट्टाचार्य, महापण्डित राहुल सांकृत्यायन र निर्देशक प्रबोधचन्द बागाची आदि हुन्। यस्तै स्वदेशी विद्वानहरूमा साहु मणिहर्ष ज्योति, इतिहासकार बाबुराम आचार्य, पं. नयराज पन्त आदि हुन्। वहाँले वज्रयानी पूजा विधिनुसार गुरुमण्डल पूजा विधान पुस्तक छापा अक्षरमा प्रकाशन गरी महत्त्वपूर्ण काम गर्नुभयो।

ने.सं. १०७२ साल आषाढ कृष्ण पक्ष ११ का दिन पं. सिद्धिहर्ष वज्राचार्यको परलोक भयो। उनको मृत्युपछि सिद्धि विहारको संरक्षणका लागि उनका पुत्र धर्महर्ष वज्राचार्य अगाडि बढ्नुभयो। उनको राम्रो लेखाईको कारणले राणाहरुको दरवारमा उनलाई जागिर दिएको थियो। यही जागिरबाट त्यसबेला "दिठ्ठा" हुनुभएको थियो। यसरी वहाँको व्यक्तित्व पनि महत्त्वपूर्ण मान्न सकिन्छ। धर्महर्षबाट ने.सं. १०५९ मा श्री अन्नपूर्ण प्रेसको स्थापना गर्नुभयो। यस प्रेसबाट अनेक धार्मिक पुस्तकको छापा अक्षरले





नेपाली कागजमा बौद्ध स्तोत्र, स्तुति गाथा, नामसंगीति, आर्यतारा स्तोत्र, मंगलस्तव, आदि पुस्तक प्रकाशित गर्नुभयो । यस्तै वि.सं. २००१ सालमा नेपालमै पहिलो जेबी डायरी (गोजीमा हाल्न हुने पात्रो) निकालेको थियो । उनको मृत्युपछि सिद्धि विहारको संरक्षणका लागि उनका छोराहरू ऋद्धिहर्ष वज्राचार्य, वृद्धिहर्ष वज्राचार्य र स्व. पुण्यहर्ष वज्राचार्यका छोराहरु मिली वि.सं. २०६० सालको जेष्ठ पूर्णिमाका दिन **"सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था"**को स्थापना गरियो । यस संस्थाको मूल उद्देश्य विहारको संरक्षण, धार्मिक, पुरातात्विक, सांस्कृतिक सम्पदाको सम्वर्द्धन गर्ने र बौद्ध धर्म सम्बन्धी पुस्तकहरू निरन्तर प्रकाशित गर्दै लैजाने हो । यस संस्थाले वर्षेनी "बुसादं" भनी जेष्ठ पूर्णिमाका दिन वार्षिक पूजा गरिदै आएको छ । यस्तै यस संस्थाको उद्देश्य अनुरुप पं. बद्रीरत्न वज्राचार्यबाट सम्पादित ग्रहमण्डल व लोकोत्तर पूजा नामक पुस्तक वि.सं. २०६० सालमा प्रकाशित गरेको छ । यस्तै यस पवित्र संस्थाले सर्वप्रथम वि.सं. २०६६ सालमा मखनबहालका स्व. धर्मरत्न (बाबुकाजी गुरुजु)द्वारा प्रस्तुत गरिएको प्राध्यापक मदनसेन वज्राचार्यद्वारा सम्पादित पुस्तक भीम, देव व महारथारोहण पूजाविधि (ज्याथजिथि जंकुपुजा विधिक्रिया) प्रकाशित गरिसकेको छ । यसरी पुस्तक प्रकाशन गर्ने क्रममा हालसालै वि.सं. २०६९ जेष्ठ पूर्णिमाको अवसरमा प्राध्यापक मुनीन्द्ररत्न वज्राचार्यले लेख्नुभएको नेपालको बौद्ध संस्कृतिको झलक पुस्तक पनि प्रकाशित गरिएको छ । अचेल ठाउँ ठाउँमा विहार, बही, मन्दिर, चैत्यहरुको मासिँदै गएको अवस्थामा यस **सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्थाले** विहारको संरक्षणका लागि गरिरहेको कार्यलाई सराहनीय मान्नु पर्दछ ।

*साभार:*
नेपालको बौद्ध संस्कृतिको झलक

ooo

अहिले आएर यो **"मञ्जुश्रीगुरु सम्बन्धित गर्तेश्वर महात्म्य र धर्मश्रीमित्रको कथा"** पुस्तकको रूपमा छापी जनसमक्ष प्रस्तुत गरिएको छ ।

ooo



# स्व. जमुनादेवी वज्राचार्यको संक्षिप्त नातागोताका नामावली

# स्व. जमुनादेवी वज्राचार्यको माइतीतर्फका नातागोताको नाम विवरण

जन्म : झ्वाःबाहाः, कुसुमबियालाक्षि, थँःहिति, काठमाडौं
जन्म मिति : १९९९ आश्विन २६ गते
**बुबा** : **स्व. बुद्धवज्र वज्राचार्य**
**आमा** : **स्व. हिरामाया वज्राचार्य**
**बाज्ये** : **स्व. लिलासवज्र वज्राचार्य**
**बज्यै** : **स्व. मूलप्रभा वज्राचार्य**
**पाजु (मामा)** : **पं. बद्रीरत्न वज्राचार्य,** महाबौद्ध
**मले (माइजु)** : **स्व. तीर्थकुमारी वज्राचार्य**

*दिदीहरू-*
**स्व. कयो** न्हूघः, **बुद्धलक्ष्मी** मूबाहाः, **स्व. चम्पा** मखंबाहाः,

*बहिनी-*
**चकना** ताहाचल

| *भाइहरू-* | *भाई बुहारी-* | *भदा / भदै* |
|---|---|---|
| **पूर्णवज्र** | कमला | जेठाराजा, अमूल्य, सुशिल, स्वस्तिक, |
| **न्हुछेवज्र** | बिमला | बर्षा, निरज, हिमाल |
| **पुष्पवज्र** | पुष्पा | |

# स्व. जमुनादेवी वज्राचार्यको श्रीमान्तर्फका संक्षिप्त नातागोताका नाम विवरण

विवाह साल : २०१२ साल

विवाह घर : असन, ज:धुंछें, ।

बाहाल : तछेबाहा:, असन ।

**श्रीमान्** : **श्री बृद्धिहर्ष वज्राचार्य**

: घर : धोबिधारा, कमलपोखरी ।

: हाल : झम्सिखेल, लपु ।

**छोरा** : **अशोकहर्ष वज्राचार्य**

**बुहारी** : **सुचिता वज्राचार्य**

**नाति** : **अयुषहर्ष**

**नातिनी** : **स्वेता**

| ***छोरी*** | *ज्वाँई* | *नाति/नातिनी* |
|---|---|---|
| **बेबी (सूर्यमती)** | **स्व. सुभाषरत्न वज्राचार्य,**<br>क्वा:बाहा:, थँहिटी, (ठमेल) | सुलभ, सरल |
| **रुबी** | **श्री नरेन्द्रविलास वज्राचार्य,**<br>इटुंबाहा: (ताहाचल) | नरुज, नविव |
| **ऋतु** | **श्री विजयश्री वज्राचार्य,**<br>सिखोंमूबाहा:, मरुहिति (कुलेश्वर) | यशस्वी, बरदान |

ससुरा बुवा : स्व. धर्महर्ष वज्राचार्य
सासु आमा : स्व. सानुनानी वज्राचार्य,
ससुरा बाज्ये : स्व. सिद्धिहर्ष वज्राचार्य
सासु बज्यै : स्व. कान्छी वज्राचार्य,
मामा ससुरा : स्व. मोहनमानन्द वज्राचार्य,
माइजु सासु : स्व. कमला वज्राचार्य,

| फफुसासु (निनिमाजु) | बाहा: | निनिमाजुका छोरा/छोरी |
|---|---|---|
| स्व. ज्ञानप्रभा वज्राचार्य, | मखंबाहा: | रत्नहिरा, नानिहिरा |
| स्व. देवप्रभा वज्राचार्य, | क्वा:बाहा: | हिराशोभा (छोरी), प्रेमकाजी, सुगतरत्न |
| स्व. हेपप्रभा वज्राचार्य, | ओम्‌बाहा: | मचानानी, शान्ति, नेमहर्ष, रम्भा, राजेन्द्रहर्ष, निर्मला |

| आमाजु (ता:भत) | भिनाजु | भाञ्जी | भाञ्जी ज्वाँई |
|---|---|---|---|
| **स्व. निर्वाणप्रभा** | स्व. देवरत्न वज्राचार्य क्वा:बाहा: | निरणप्रभा | श्री छज्जुविलास वज्राचार्य |
| | | *भाञ्जाहरू* | |
| | | नविन, सानु, पुण्य, सजन, दीपक | |

| जेठाजु (दाजुभत) | जेठानी (पीत) | भतिजा/भतिजी | भतिजी ज्वाँई / भतिजा बुहारी | भतिजा-जी नाति/नातिनी |
|---|---|---|---|---|
| **स्व. पुण्यहर्ष** | **स्व. छोरी** | रूपमती | डा. स्वस्तिवज्र वज्राचार्य | पूजा, पुनम, स्वरूप |
| | | नीरमती | प्रा. मुनीन्द्ररत्न वज्राचार्य | प्रीति, दिपेन्द्र |
| | | प्रमोद | उर्मिला | प्रणय, प्रसन्न, प्रतिक, प्रशंसा |
| | **स्व. गुनु** | परमानन्द | रजना | रिया, प्रज्वल |
| | | शान्त | शितल | समता, शिद्धार्थ |
| | | सुधीर | अमु | ऐसा, स्वयम् |
| **स्व. ऋद्धिहर्ष** | **मैयाँ केशरी** | इन्द्रमती | श्री भरत वज्राचार्य | एलिना, एलिसा |
| | | आनन्द | किरण | आकृति, आजाद |
| | | चन्द्रमती | श्री अमेसरत्न वज्राचार्य | नसला |
| | | कल्याण | मञ्जु | समीप |

# दिवंगत जमुनादेवी वज्राचार्यका केही स्मरणीय फोटो













॥ ओँ नमो आर्यावलोकितेश्वराय, बोधिसत्वाय, महाकारुणिकाय नमो ॥

**।। आर्यावलोकितेश्वरया धारणी ।।**

ओँ नमो आर्यावलोकितेश्वराय, बोधिसत्वाय, महाकारुणिकाय ॥तद्यथा॥
ओँ चल चल, चिलि, चिलि, चुलु चुलु, कुलु कुलु, मुलु मुलु, हूँ हूँ हूँ हूँ
फट् फट् फट् फट् पद्म हस्ते स्वाहा ॥

**जन्मः**
वि.सं. १९९९
आश्विन
२६ गते,
सोमवार



**दिवंगतः**
वि.सं. २०७१
आषाढ
२ गते,
सोमवार

# दिवंगत जमुनादेवी वज्राचार्य

**।। दुर्गति परिशोधन धारणी ।।**

ओँ नमो भगवते सर्वदुर्गति परिशोधन राजाय तथागतायाऽर्हते
सम्यक् सम्वुद्धाय ॥ तद्यथा ॥
ओँ शोधने शोधने विशोधने विशोधने सर्वपाप विशोधने शुद्धे विशुद्धे
**दिवंगत जमुनादेवी वज्राचार्य** नामधेयश्य
सर्वकर्मावरण विशोधने स्वाहा ॥

ओँ पद्मे पद्मे महापद्मे पद्मगर्भे **दिवंगत जमुनादेवी वज्राचार्य**
नामधेयश्यं सुखावत्यां लोकधातावनुगच्छन्तु स्वाहा ॥

ओँ आ हूँ **दिवंगत जमुनादेवी वज्राचार्य** नामध्याय
निर्वाण मार्गफल प्राप्ति कुरु हूँ फट् स्वाहा ॥

**दिवंगत जमुनादेवी वज्राचार्य**
**सुखावती भुवनमा बास होस् भनी वज्रसत्व भगवानसँग**
**संस्थाका सम्पूर्ण परिवारबाट प्रार्थना गर्दै दिवंगतमा हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं ।**

**सिद्धि-धर्महर्ष धार्मिक संरक्षण संस्था, परिवार**